

(वीर सहिदहरूको संस्मरणमा कीर्तिपुर,काठमाडौंबाट प्रकाशित )

# सहिद

SAHID WEEKLY साप्ताहिक





वर्ष ९, अंक ३८, (पूर्णाङ्क ३६२) पृष्ठ -६ ने.सं. ११३३ थिंलागा, सप्तमी, वि.सं. २०६९ पुस २० गते शुक्रबार JAN. 2013 मूल्य रु. ५।-


### अध्यक्ष बिजुक्छेंसँग

## प्रजग कोरियाका राजदूत सुको भेट

नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छें (रोहित) सँग प्रजग कोरियाका महामहिम राजदूत किम योङ सु (Kis Yong Su) ले भक्तपुरमा भेट गर्नुभयो ।

भेटमा राजदूत सुले नयाँ वर्ष सन् २०१३ को अवसरमा कोरियाली मजदुर पार्टी र नेता किम जङ उनको शुभकामना पुऱ्याउन अध्यक्ष बिजुक्छेंलाई भेट्न आएको बताउँदै यसअघि प्राप्त नभएको उपलब्धी नेता किम जङ उनको नेतृत्वमा प्राप्त भएको उल्लेख गर्नुभयो ।

राजदूत सुले नयाँ वर्षको अवसरमा प्रकाशित कोरियाली मजदुर पार्टीका नेता कामरेड किम जङ उनको

**क्रमशः अन्तिम पृष्ठमा**

# लाज शरम गुमाएका नेताहरू.....

पशु र अन्य जनावरहरु सिक्रीले बाँधिन्छन् भने मानिसहरु लाज शरमले बाँधिएका हुन्छन्। सिक्रीले नबाँधे जनावरहरु हिँस्रक हुनसक्छ । लाज नभएपछि मानिसको नगाँ नाँचे हजार दाऊ सरह हुन्छ ।

नेपालको राजनीतिमा नेपाली जनता अहिले दिक्क भएका छन्। हरेक परिवर्तनपछि सर्वसाधारण जनता राज्यबाट ठूलो आशा र भरोसा गर्नु स्वभाविक छ । परिवर्तन प्रगतिशीलको लागि हो। प्रगतिको लागि हो। जनता र देशवासीको जनजीविकाको प्रगतिको लागि हो । तर देशमा लाज शरम गुमाएका नेताहरुले गर्दा प्रगति हुनुको सट्टा दुर्गति भैरहेको छ । देशलाई विदेशमा बन्धक राख्न तयार होलान् तर असफलताबाट पाठ सिकेका छैनन् ।

४६ सालको प्रजातन्त्र र ०६२/०६३ प्रतिगमन आन्दोलनबाट गणतन्त्र पाउँदा समेत माल पाएर पनि चाल पाएका छैनन् (माल पाएर के गर्ने चाल पाए पो)

गणातन्त्रपछिको चारवटा कम्यूनिष्ट नामधारी पार्टीका चार शीर्ष नेताहरुले कम्यूनिष्टको “क” पनि काम गर्न नसकेको जग जाहेर छ । असफलता भएपनि निकास दिन सकेको छैन । संविधानसभाको हत्यापछि हत्याराहरु आफू चोखै भएको बहाना बनाउँदैछन्। चार शासक दलहरु लाज शरम नभएका छन् भने राष्ट्रपति स्वयं पनि लाज शरमबाट गुमनाम भएका छन् ।

छैठौं पटक असफल भएपछि राष्ट्रपतिबाट सातौं पटकपनि असफल प्रयास गर्न पछि परेन । कति पटक थपौं भन्दै थप्नुको अर्थ के रह्यो । लाजशरम नभएका नेताहरुलाई ठीक ठाउँमा ल्याउन अब सहमतीय होइन बहुमतीय सरकार बनाउन आह्वान गर्नुपर्दछ कि त राष्ट्रपतिले स्वतन्त्र तटस्थ व्यक्तिको सरकारको नियुक्त गर्न सक्नुपर्दछ ।

राष्ट्रपति राष्ट्राध्यक्ष हुन भने खोपाको देउता बनेर पुजनीय मात्र बन्न होइन, सफल पहल गर्न सक्नु पर्दछ ।

### संविधान सभाको पुन:स्थापना आत्मघाती हुने– रोहित

काठमाडौं । नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छें (रोहित) ले संविधानसभाको पुन:स्थापनाले देश अहिलेको अवस्थाबाट कति पनि परिवर्तन नहुने बताउनु भएको छ ।

उहाँले जात-जाति एवं भाषाभाषीमा आधारत संघ राज्य, आत्मनिर्णयको अधिकारसहितका एमाओवादी-मधेसवादी शर्तहरु मान्ने अवस्थामा एमाओवादी र मधेसवादी दलहरुले

**क्रमशः अन्तिम पृष्ठमा**

### स्वतन्त्र र तटस्थ व्यक्तिको सरकार उचित - प्रम भट्टराई

गणतन्त्र नेपालका चौथो प्रम बाबुराम भट्टराईले अन्ततः स्वतन्त्र र तटस्थ व्यक्तिको नेतृत्वमा सरकार बनाउन उचित निकास भएको स्वीकार गरी नेकपा एमालेका वरिष्ठ नेता नेपालको गृहमा पुगी सोबारे छलफल गरेको छ ।

छलफलबारे नेता नेपालले छिटो भन्दा छिटो राजनीतिक

**क्रमशः अन्तिम पृष्ठमा**

## ज्यापु सरस्वती पदकबाट नन्दकुमारी सम्मानित



जनसेवा उच्च माध्यामिक विद्यालय पाँगा कीर्तिपुरकी प्राचार्य नन्दकुमारी महर्जन ‘ज्यापु सरस्वती पदक’बाट सम्मानित हुनुभएको छ ।

ज्यापु संस्कृति विकास कोषको आयोजनामा बसन्तपुरमा भएको नवौं ज्यापु दिवसको उपलक्ष्यमा प्रमुख अतिथि प्रधानमन्त्री बाबुराम भट्टराईले सो पुरस्कार प्रदान गर्नुभएको थियो ।

प्रम भट्टराईले नन्दकुमारी महर्जनलाई दोसल्ला ओढाई सम्मान पत्र प्रदान गरिएको थियो । त्यसैगरी बाल साहित्यकार एवं नेपालभाषा आन्दोलनका अगुवा कवि राजभाइ जक:मीलाई पनि ज्यापु विशेष सम्मान पुरस्कार प्रदान गरिएको थियो ।

## अब बिरामीले नि:शुल्क रगत पाउने

काठमाडौं । अब नि:शुल्क रक्तदान भएजस्तै नि:शुल्क रुपमा रगत पनि पाइने भएको छ ।

नेपाल रेडक्रस सोसाइटीद्वारा सञ्चालित रक्तसञ्चार सेवा केन्द्रहरुले नि:शुल्क रुपमा प्राप्त भएका रगत भण्डराणलगायत अन्य प्राविधिकमा भन्दै हाल प्रतियुनिट रु.५१०।- लिँदै सम्बन्धित बिरामीलाई सिफरिसका आधारमा वितरण गरिराखेको छ ।

**क्रमशः अन्तिम पृष्ठमा**

## एमाले भिजनविहीन पार्टी ?

हरेक राजनीतिक पार्टीको आफ्नै नीति हुन्छ। नीति र दृष्टिकोणविहीन राजनीतिले देशलाई गुमराह राख्छ । देश गुमराह पार्नु भनेको आफ्नै कार्यकर्ता र नेतालाई अविश्वास गर्नु हो । राजनैतिक अन्योल भन्दै एमाले केन्द्रीय कमिटीको जारी बैठक दोस्रो पटक स्थगन भएको छ । १९ औं केन्द्रीय कमिटीको मंसिर २५ मा सुरु बैठक पुस २५ सम्मका लागि स्थगन गरिएको छ ।

अन्योलका समयमा स्पष्ट नीति र निर्णय सहित उत्तम निकास निकाल्नुको सट्टा बैठक स्थगन गर्नु भिजनविहीन पार्टी बन्नु हो ।

**क्रमशः अन्तिम पृष्ठमा**

# नेपालमा कुल बेरुजू लागत ८८ अर्ब

नेपालमा सरकारी ( मन्त्रालय/ निकाय कार्यालय र संगठित संस्था/समिति) गरी ८८ अर्ब ७ करोड ६३ लाख ३५ हजार कुल बेरुजू लागत रहेको छ । सरकारी कुल बेरुजू लागत रु. ५४ अर्ब ३६ करोड १ लाख ६१ हजार छन् भने संगठित संस्थामा ३३ अर्ब ७१ करोड ६१ लाख ७४ हजार बेरुजू रहेका छन् ।

२०६९ मंसिर सम्म मन्त्रालय निकायबाट १२ अर्ब ११ करोड ३४ लाख ६० हजार सम्परीक्षणलाई लेखी आएकोमा ९ अर्ब ४६ करोड ३३ लाख ५ हजार सम्परीक्षण भएको र संगठित संस्थाबाट २ अर्ब ६० करोड ९६ लाख ३६ हजार लेखी आएकोमा १ अर्ब १० करोड ३८ लाख १९ हजार सम्परीक्षण भएको महालेखा परीक्षणको कार्यालयले पौष १६ गते सूचना तथा सञ्चार मन्त्रालयमा भएको अन्तरक्रिया कार्यक्रममा जानकारी दिनुभएको हो ।

**ऐतिहासिक जनअन्दोलन २०४६ चैत २० गते शहादत अमर सहिद**


लनबहादुर महर्जन वि सं. २००६ माघ


हिराकाजी महर्जन वि सं. २०१७ माघ


राजमान माली वि सं. २०२५ मंसिर


राजेन्द्र महर्जन वि.सं. २०३० चैत


**सहिद साप्ताहिक**

वर्ष ९ अंक ३८, २०६९ पुस २० गते शुक्रबार

शंखापुर प्रकाशन समूहको लागि

सम्पादक/प्रकाशक: नारायण महर्जन

विज्ञापन/वितरक: नेल्सन

व्यवस्थापक: प्रताप, वीरुण

कम्प्यूटर टाइप/सेटिङ: श्याम महर्जन

सम्पर्क कार्यालय: जहूँ हिटी युवा क्लव – ११ पाँगा, कीर्तिपुर, फोन नं. ४३३०५८३

E-mail:- kipushahid@hotmail.com

www.kipushahid.blogspot.com

www.ourkirtipur.com.np

मुद्रण : शर्मिला प्रिन्टर्स, डल्लु, काठमाडौं


## सम्पादकीय .....

# राष्ट्रको चिन्ता गर

प्राणी मध्ये सबैभन्दा विवेकशील प्राणीमा मानिस हुन् । सबै प्राणी जन्मिन्छन् र एकदिन मर्नै पर्दछ । हाम्रो मृत्यु कस्तो हुने प्वाँख सरी हलुको या पहाड सरी गर्‍हौं, हिमालसरी टलक्क टल्कने ! जसले देश र जनताको हितमा स्थानीयदेखि राष्ट्रसम्मको चिन्ता गर्दैन तिनिहरुको मृत्यु प्वाँखजस्तै हलुका हुन्छन् । ए त्यो मर्‍यो है.....सम्झने त्यति मात्र ।

जसले देश र जनताको हितमा स्थानीयदेखि राष्ट्रियसम्मको चिन्तन गर्दछ, समाज परिवर्तन गर्न खोज्दछ, जनताको जनजीविका सरल र शान्त ढंगले जिउन आफ्नो ज्यान समेत प्रर्वाह नगर्नेहरुको मृत्यु पहाडभन्दा गर्‍हौं, हिमाल भन्दा टलक्क टल्कने हुन्छ ।

मानवमा रिस हुन्छ, इर्षा, लोभ र त्याग मध्ये त्यागको भावनाले काम गर्न सकेमा स्थानीय राष्ट्रिय आफ्नो छवि बनाउन सकिन्छ ।

यो कुरा धरायसी होस् या बाह्य जहाँपनि लागू हुन्छ । अझ त राजनीतिमा लागेका नेतादेखि कार्यकर्ता, समर्थक, शुभचिन्तकहरुमा त्यागको भावना जागृत गर्न सक्नुपर्दछ । आज देशमा सत्तासिन दलहरुले कुर्सी त्याग गर्न नसक्दा संविधानसभाको हत्या गर्नपनि पछि परेनन् ।

गोली खान तयार रहे बालुवाटार नछाड्ने हदसम्मको अभिव्यक्त सुन्नु परे ।

वर्तमान राजनैतिक अन्योल लम्बिनुमा पनि त्यागको अभावले नै हो । यदि देश र जनताको हितमा सबै दलहरुले त्यागको भावना जागेको भए निकास निस्किसक्दथ्यो ।

त्याय र नैतिकता र इमानारीता अनि दुरदृष्टिको दृष्टिले नेमकिपाबाट सबै दलले शिक्षा लिनै पर्दछ । जे बोल्छ, जे नीति लिन्छ त्यो सही सावित हुँदै देशमा राजनैतिक प्रकाश स्तम्भ झैं स्थापित छन् ।

भक्तपुर काण्डबाट पंचायत तानाशाहीको अन्त्य, प्रतिगमन विरुद्ध संघर्षमा गणतन्त्रको प्राप्त व्यवस्थापिका संसदको पुनःस्थापनाले मात्र सम्भव भएको हो । त्यस्तै अहिलेको अन्योल राजनीतिमा स्वतन्त्र दलहरुको असफलतालाई ध्यान राख्दै राष्ट्रपतिमार्फत स्वतन्त्र र तटस्थ व्यक्तिको नेतृत्वमा सरकार, संसदीय निर्वाचन जुन नीति प्रस्तावित गरेको छ अन्ततः सहि सावित हुँदै आइरहेको छ ।

कमसेकम राजनीतिक दलहरुले दलगत स्वार्थ त्यागेर स्थानीय राष्ट्रिय र नेपाल र नेपाली जनताप्रति अलिकति चिन्ता गरेमा देश र जनताकै हित हुने पक्का छ ।

# तटस्थ निर्वाचन सरकार उत्तम विकल्प


– सनकमान महर्जन,
केन्द्रीय सदस्य, नेमकिपा



नेमकिपा चौथो काठमाडौं जिल्ला सम्मेलन मंसीर ३० गते सहभागी जनसमुदाय

सर्वप्रथम काठमाडौं यस ऐतिहासिक स्थान बसन्तपुरमा आयोजित पार्टीको चौथो जिल्ला सम्मेलनको पूर्ण सफलताको कामना गर्दछु ।

देश यतिबेला संवैधानिक र राजनैतिक सङ्कटको भूमरीमा फसेको छ । आम नेपालीको जीवन झन् झन् कष्टकर बन्दै गएको छ । भ्रष्टाचार, महङ्गी, लोडसेडिङ्ग, असुरक्षाले देश आक्रान्त छ । बाबुरामको सरकार जनताको समस्या समाधानको होइन, आफ्नो आयु लम्ब्याउने दुस्साहस गर्दैछ । नेपालको राजनैतिक डबलीमा छुट्टै पहिचान र स्थान बनाएको नेपाल मजदुर किसान पार्टीले राष्ट्रिय र अन्तर्राष्ट्रिय घटनाक्रमबारे आफ्नो धारणा जनतासामु प्रस्ट पार्दै आएको छ । राष्ट्रिय, अन्तर्राष्ट्रिय घटनामा हाम्रो पार्टीले लिएको स्पष्ट अडान र निर्णयबाट हामी कहिल्यै पछाडि हट्नु परेको छैन ।

नेपाल मजदुर किसान पार्टी मार्क्सवाद लेनिनवाद र माओ त्सेतुङ विचारधारालाई मार्गनिर्देशक सिद्धान्तको रुपमा अङ्गीकार गर्दै कामदार जनतालाई शासक वर्गमा रुपान्तरण गर्ने लक्ष्य लिएर अगाडि बढेको पार्टी हो । समाजवाद हुँदै साम्यवादी व्यवस्था स्थापना गर्ने हाम्रो पार्टीको दीर्घकालीन लक्ष्य हो । पूँजीवादी व्यवस्थाको खराबी एवं दोषहरूको अन्त्य समाजवादबाट सम्भव छ । पूँजीवादको विकल्प पूँजीवाद नै हुनसक्दैन । यस अर्थमा विश्वका कामगरी खाने वर्ग किसान, मजदुर वर्गको हितका लागि समाजवादमात्र एउटा बाटो हो । नेपाल मजदुर किसान पार्टी स्थापनाकालदेखि नै समाजवादका लागि संघर्षरत छ । नेपालको अहिलेको लोकतान्त्रिक गणतन्त्र पनि पूँजीवादी गणतन्त्रकै एउटा रुप हो । यस व्यवस्थाबाट आम काम गरी खाने वर्गको हित सम्भव छैन भन्ने नेमकिपाको ठम्याइ छ । हाम्रो पार्टीले पूँजीवादी गणतन्त्रकै एउटा रुप हो । यस व्यवस्थाबाट आम काम गरी खाने वर्गको हित सम्भव छैन भन्ने नेमकिपाको ठम्याइ छ । हाम्रो पार्टीले पूँजीवाद र समाजवादको भिन्नतावारे जनतालाई शिक्षित पार्ने अभियान चलाउँदै आएको छ ।

देशमा एकातिर बेरोजगारी समाचार बढ्दो छ भने अर्कोतिर सरकार रेमिट्यान्स भित्र्याउने नाममा दैनिक १५ सय युवालाई खाडी देशलगायत अन्य देशमा पठाइरहेको छ । मध्ययुगीन दासदासी, बेचबिखनजस्तै नेपाली युवा रोजगारीको नाममा विदेश पठाउनु पनि मानव बेचबिखन नै भएको पार्टीको ठहर छ । नेमकिपाले बेरोजगार नेपाली युवालाई भत्ता दिनुपर्ने माग गर्दै आएको छ । कर्मठ युवा, रोजगारीका लागि विदेश पलायनले देशकै औद्योगिक क्षेत्रमा श्रमिकको समस्या देखिसकेको छ । सामाजिक समस्यामा समेत बढ्दो छ । म्यानपावर कम्पनी, सरकारमा रहेका केही व्यक्तिहरूको ठगी खाने माध्यम बनेको छ । म्यानपावर कम्पनी आफै नक्कली एवं जालसाझीपूर्ण कामबाट हजारौं युवा दैनिक रुपमा ठगिरहेका छन् । यसमा सरकार बेखबर जस्तो छ ।

नेपाल मजदुर किसान पार्टी पूँजीवादी सत्ता प्राप्तिको कुकुर झगडामा कहिल्यै फसेको छैन । नेमकिपा मात्र एउटा त्यस्तो राजनैतिक पार्टी हो जुन पार्टी पूँजीवादी सरकारमा सामेल भएको छैन । निश्चय पनि हरेक राजनैतिक दलको आफ्नो छुट्टै सिद्धान्त र विचार बोकेको हुन्छ । सिद्धान्त र विचारविहीन राजनैतिक दलको कुनै अर्थ र महत्व रहँदैन । देशको प्रमुख राजनैतिक दल एनेकपा (माओवादी), एमाले, मधेसवादी दल, नेकामा राजनैतिक सिद्धान्त र नैतिकताबाट च्यूत भएको छ । सत्ताको लागि जुनसुकै गठबन्धन र जे गर्न पनि तयार रहने यी राजनैतिक दलबारे नेपाली जनता यतिखेर प्रस्ट हुँदैनन् । संविधान निर्माणका चार वर्ष यी ठूला राजनैतिक दलले सत्ताको तानातानमा मरिहत्ते गरे । संविधान निर्माणका कार्यलाई दोस्रो प्राथमिकतामा राखे । फलतः तोकिएको जिम्मेवारी पूरा नगरी संविधानसभाको विघटन होइन हत्या गरियो । संविधानसभाको विघटन होइन हत्या गरियो । संविधानसभाको हत्या गर्ने बाबुरामको सरकार लाज पचाई सरकारमा टाँसिएको छ भने प्रमुख प्रतिपक्ष नेका, एमाले, कहिले संघर्ष त कहिले सहमतिको कुरा गरेर जनतालाई झुक्याइरहेका छन् ।

नेमकिपाले वर्तमान संवैधानिक सङ्कटको समाधानको लागि छोटो समयको लागि निकास दिन राष्ट्रपति शासन उपयुक्त हुने बताउँदै आएको छ ।

दलको परामर्श, सुझावको आधारमा निर्वाचनमा भाग नलिने व्यक्तिहरूको तटस्थ निर्वाचन सरकार गठन गर्न माग गर्दै आएको छ । सङ्कट समाधानका लागि तटस्थ निर्वाचन सरकार गठन गर्न माग गर्दै आएको छ । सङ्कट समाधानका लागि तटस्थ निर्वाचन सरकारको गठन उत्तम विकल्प भएको नेमकिपाको ठहर छ । ढिलो चाँडो प्रमुख दल हामीले सुझाएको बाटोमा नै आउनैपर्छ । अबको निर्वाचन संविधानसभाको लागि होइन संसदको लागि हुनुपर्ने र उक्त नयाँ संसदलाई संविधान निर्माणको जिम्मेवारी दिनुपर्ने पार्टीको दृष्टिकोण हो ।

नेमकिपाले पूँजीवादी सरकारहरूको महङ्गी, भ्रष्टाचार, नातावाद, कृपावाद, शोषण तथा जनविरोधी निर्णयलाई जनतामाझ उदाङ्ग्याउने कार्य गर्दै जानेछ । देश र जनताप्रति हामीले हिजो निर्वाह गरेको भूमिका आगामी दिनमा पनि निर्वाह गर्दै जाने निश्चित छ । देश र जनतालाई धोका दिने राजनैतिक दल एकदिन जनताबाट ओझेलमा पर्ने निश्चित छ । हामी निराशामा होइन आशामा विश्वास गर्छौं । हामीलाई विश्वास छ नेपाली जनताले एकदिन समाजवादी क्रान्तिको अभियान पूरा गर्नेछन् ।

# बुद्ध धर्ममा शील

– पूर्णमान महर्जन



शील भनेको सदाचार हो। शील अनुशासन हो। शील नियम हो। शील समय हो। अर्को रुपमा कुशल कर्म/धर्मलाई धारण गर्नु यसको अर्थ हो। यसैगरी शील धर्मको जग हो, शील माथि चढ्ने भऱ्याङ हो, शील कायको पवित्रता, वाणीको पवित्रता र मनको पवित्रता हो। पण्डितहरुले हिरि (पाप गर्नुमा लज्जा) र ओतप्प (पाप गर्नुमा डर)लाई यसको पदस्थान भनेका छन्। हिरि र ओतप्प भएकै कारणले शील उत्पन्न हुन्छ। पश्चाताप नगर्नु यसको गुण हो। अनाचार (दु:शील) को नाश गर्नु तथा निर्दोष गुणयुक्त हुनु शील हो। शरीरमा शीर (टाउको) भएन भने शरीरको अस्तित्व लोप हुने जस्तै विना शील गुणधर्मको सत्ता नै लोप हुन्छ।

शीलरुपी भऱ्याङ्गमा थुप्रै खुड्किलाहरु छन्। प्रथम खड्किलो यानि सच्च व्यक्तिले पालन गर्नुपर्ने शील पञ्चशील हो। पञ्चशील भन्नाले (१) प्राणी हिंसा नगर्ने, (२) चोरी नगर्ने, (३) व्यविचार (अनैतिक कार्य) नगर्ने, (४) असत्य नबोल्ने र (५) लागु पदार्थ सेवन नगर्ने हुन्। सामान्य शील भन्नाले यही बुझिन्छ। पाँचवटा शिक्षा भएको हुनाले यसलाई पञ्चशिक्षापद पनि भनिन्छ। चक्रवर्ती राजाहरुले शासन चलाउँदा यसैलाई आधार मानी कानुन बनाउने हुनाले चक्रवर्ती नियम पनि भनिन्छ। गृहस्थिहरुको लागि गौरवपूर्वक रक्षा गर्नुपर्ने धर्म भएकाले यसलाई गरुधर्म र गृहस्थशीलको रुपमा पनि लिइन्छ। यसैगरी अर्य सत्पुरुषहरुको धर्म भएकोले आर्यधर्म र आर्यकान्त/अरियकन्त (आर्यहरुले मनपराउने) को रुपमा प्रचलित छ। नित्यरुपमा पालन गर्नुपर्ने हुनाले यसलाई नित्यशीलको रुपमा पनि लिइन्छ। अष्टशील, दशशील, (श्रामणेर शील), २२७ भिक्षु विनय, ३३१ भिक्षुणी विनय पनि शील हुन्।

पालन गर्नुपर्ने शीललाई चारित्र शील भनिन्छ। राम्रा कुराहरुलाई पालन गर्नुपर्दछ भने नराम्रो कुरालाई छोड्नु पर्दछ। त्यसैले छोड्नु पर्ने शीलाई वारित्र शील भनिन्छ। दु:ख मक्तिको मार्ग आर्य अष्टङ्कि मार्ग हो। यसलाई शील, समाधि र प्रज्ञामा विभाजन गरिएको छ। शील अन्तर्गत सम्यक वचन, सम्यक कर्मान्त र सम्यक आजिविका पर्दछन्। वोधिसत्वले बुद्ध हुने क्रममा दशपारमिता पूर्ण गर्नुभयो। दशपारमितामा एक शीलपारमिता हो। शीलपारमिता अन्तर्गत पर्दछन् :

१) शीलपारमिता अर्थात् आफ्नो सु:ख सुविधा त्यागेर पनि शीललाई नविगारीकन पालन गर्ने, २) शीलउपपारमिता अर्थात् आफ्नो शरीरका अंग प्रतयंगहरु नाश भएपतापनि शीललाई नविगारीकन पालन गर्ने र ३) शीलपरमथ्तपारमिता अर्थात् आफ्नो प्राण नै गएपनि शीललाई नविगारीकन पालन गर्ने।

शरीरलाई शीर (टाउको) को जति महत्व हुन्छ, जीवनमा शीलको त्यति नै महत्व हुन्छ। बुद्ध धर्ममा शीललाई पहिलो खुड्किलो मानिन्छ। यसलाई पार नगरीकन अरु खुड्किलो चढ्ने कार्य प्राय: असम्भव छ। किनभने कुशल धर्मको आरम्भ शीलबाट हुन्छ। भगवान बुद्धको उपदेश "सब्ब पापस्स अकरण" अर्थात् नगर्नु सबै पापहरु शील धर्मको आरम्भ हो। शीलले कामसुखमा लिप्त हुने तृष्णा अन्त्य गर्दछ। शीलले क्लेसहरुको दमन र निरोध गर्दछ। खराब आचरण (दु:शील) लाई नाश गर्ने गर्दछ। त्यसैले भनिन्छ "गंगा, जमुना, सरस्वती, अचिरवती (राप्ती), नारायणी र महानदीले जुन मललाई धोएर सफा गर्न सक्दैन, प्राणीहरुको त्यो मल यस शीलको जलद्वारा धोएर सफा हुन्छ।"

शील सबै सम्पत्तिको मूल हो किनभने शीलवानको लागि अल्पमात्र गरेको उपकारको महाफलदायक हुन्छ। मनुष्यलोक र देवलोकमा जुन सम्पदा छ, त्यो शीलवानको लागि दुर्लभ हुँदैन। शीलपालनामा अकुशल कर्म नहुने हुनाले पश्चाताप गर्न नपर्नु शीलको आनिसंस हो। शील स्रोतापन्न, सकृदागामी फल प्राप्तिको साधन हो। अर्थात् निर्वाण नगरको प्रवेशद्वार या स्वर्ग आरोहणको सिढी शील हो यसको सुगन्ध जस्तो दोस्रो कुनै सुगन्ध छैन। यसको आभूषणद्वारा विभुषित जति शोभायमान हुन्छ, त्यति सर्वश्रेष्ठ मोती मणिहरुद्वारा शोभित राजा हुन सक्दैनन्। शील पालनामा धेरै धेरै गुणहरु विद्यमान छन्। यसका मुख्य पाँच गुणहरु यस प्रकार छन् :-

१) शीलवान/शीलयुक्त व्यक्ति प्रमाद या बेहोशमा नपर्ने हुनाले धनसम्पत्तिको कहिल्यै अभाव हुँदैन,

२) शील पालन गर्ने शीलवानको ख्याति, इमान्दारी फैलिन्छ,

३) शीलपान गर्ने व्यक्ति जसको सभामा पनि निर्भिक नि:संकोच रुपले जान्छ,

४) शीलपालन गर्ने शीलवान बेहोश भएर मर्दैन र

५) शील पालन गर्ने व्यक्ति मृत्युपछि सुगतिमा उत्पन्न हुन्छ।

प्रा. म्याक्स मुलरले एक ठाउँमा उल्लेख गरेका छन् कि विश्वले अहिलेसम्म थाहा पाएका मध्ये बुद्धको नैतिक नियम सबैभन्दा उत्कृष्ट हो। यस प्रकारको उत्कृष्ट नैतिक नियमको पालनाको महत्व पनि उत्कृष्ट हुनु स्वभाविक हो। किनभने जाल-जंजालमय भवद्:खबाट मुक्त गराउने सद्बीज शील हो। शील पालनामा दृढ स्थविरले एकजना गृहस्थको पिठ्युँमा अरहत्व प्राप्त गरेको प्रसङ्ग यहाँ उल्लेख गर्नु सान्दर्भिक हुनेछ। महातिष्य स्थविर अकालको समयमा मार्गमा जाँदा भोजन मिलेन। यात्राको थकावटले शरीर दुर्वल भएर कुनै पाकेको आँपको रुखमुनि पल्टिनुभयो। स्थविर थाकेको थाहा पाएर एक वृद्ध गृहस्थले आँपको सर्वत पिलाएर आफ्नो पिठ्युँमा बोकेर आफू बस्ने स्थानमा लग्यो। पिठ्युँमा बोकाउँदै जानु भएको स्थविरले मनमनै विचार गरेर आफैले आफूलाई "उ न तिम्रो पिता हो, न माता हो, न आफन्त हो, न भाइ हो, जसले त्यस्तो काम गरोस्, मात्र तिमी शीलवान भएको नाताले त्यो व्यक्तिले तिम्रो सेवा गर्दैछ" आदि उपदेश गरी विपश्यना ज्ञान बढाएर गृहस्थको पिठ्युँमा नै अरहत्व प्राप्त गर्नु भयो। त्यसैले शील पालनाको महत्व सन्दर्भमा बुद्धले भन्नुभएको छ -

"सीलेन सुगतिं यन्ति, सीलेन भोगसम्पदा।
सीलेन निब्बुतिं यन्ति, तस्मा सीलं विसोधये॥"

अर्थात् शील पालना गर्नेलाई सुगति प्राप्त हुन्छ, शीलले भोगसम्पत्ति दिन्छ, अझ शीलले निर्वाणसम्म पुऱ्याइदिन्छ। तसर्थ शीललाई परिशुद्ध रुपले पालन गर्नुपर्दछ। शीलको पहिचानबारे मिलिन्द राजाको प्रश्नको सम्बन्धमा भन्ते नागसेनको प्रत्युत्तर थियो "धर्ती जस्तो शील मानिसहरुको आधार हो, कल्याण र समृद्धिको मूल जरो हो, सबै बुद्धहरुको शासन (धर्म) को मुख हो, मोक्ष (मुक्ति) को लागि उत्तम मार्ग हो।" त्यसैले अनन्त दु:खको चक्रबाट पार हुन, अपरिमित सुखानन्दको अनुभव गर्न र निर्वाणको गन्तव्यमा पुग्न जसरी बट्टाई चराले आफ्नो अण्डालाई, चौरीले आफ्नो पुच्छरलाई, आमाले एक्लो प्रिय पुत्रलाई, कानाले आफ्नो एउटै आँखाको रक्षा गर्दछ, त्यसरी नै हामी सबैले शीललाई सर्वदा प्रेम र गौरव राख्नुपर्दछ।

# नेपाली समाज र महिला हिंसा

– श्रीराम कासिछ्वा (आवाज)

नेपाली समाजमा एउटा भनाइ प्रचलित छ 'नारी र पुरुष एकै रथका दुई पाङ्ग्रा हुन्।' नारी र पुरुष कुनै एकको अभावमा समाज अपूर्ण हुन्छ। नारी संसारको सृष्टिकर्ता हुन्। नारीविनाको संसार कल्पना गर्नु त मूर्खता हुन्छ। किनकि नारी भनेकी जननी हुन्। त्यसैले समाज निर्माणमा नारी र पुरुष दुवैको अहम भूमिका रहन्छ।

समाज परिवर्तनशील छ। परिवर्तनशील समाजसँगै मानिसका सोचाइ, व्यवहार र आनीबानीमा समेत परिवर्तन हुनु जरुरी छ। परिवर्तनशील समाजले नै भविष्य निर्धारण गर्दछ। तर अझैसम्म पनि हाम्रो पुरानो सोचाइमा परिवर्तन भएको देखिँदैन। आजको २१ औं शताब्दीमा पनि समाजमा रुढीवादी, छुवाछुत, जातपात इत्यादि व्याप्त छ। त्यस्तैको एक रुप हो महिला हिंसा।

महिला हिंसा जघन्य अपराध हो। नेपाली समाजमा महिला हिँसाले जरा गाडेको कुरा यी घटनाबाट पुष्टि भएको छ र सञ्चार माध्यममार्फत् हामीले सुन्ने र देख्ने गरेका छौं। हालै हाम्रै देशको बर्दियामा जलाइएकी शिवा हासमीको कुराले नेपाली समाज यतिखेर लज्जित छ। यो एउटा प्रतिनिधि घटनामात्र हो। यस्ता अनेकन घटनाहरू समाजमा घटिरहेका छन्। आखिर किन त यस्ता घटनाहरू भइरहेका छन्? कहिले दाइजो नल्याएको निहुँमा त कहिले छोरी पाएको निहुँमा महिलाहरू घरेलु हिँसाबाट पीडित छन्। यतिमात्र कहाँ हो र? महिलाहरू सार्वजनिक यातायातका साधनका समेत दुर्व्यवहारको सिकार बनिरहेका छन्। गत साता मात्रै हाम्रै छिमेकी राष्ट्र भारतमा सामूहिक बलात्कारको सिकार भएकी छात्राको उपचारको क्रममा सिंगापुरमा मृत्यु भएको छ। यसरी हेर्दा महिला हिँसा नेपालको मात्र नभई दक्षिण एसियामा नै डरलाग्दो स्थिति छ।

महिलाहरू समाजमा शारीरिक र मानसिक हिंसाबाट प्रताडित छन्। महिलाहरूलाई खाली घरायसी कामकाजमा मात्र सीमित रहेकोले यस किसिमको घटना बारम्बार भएको हो। अध्ययनले के देखाउँछ भने हाम्रो समाजमा खासै सामाजिक रुपान्तरण भएको देखिँदैन। साथै महिलाले पनि आफूमाथि भएको दुर्व्यवहार र ज्यादतीबारे खुलस्त हुन सकेको छैन। फलस्वरुप यसले महिला हिंसालाई मलजल पुगेको छ। त्यसैले समाजमा महिलाहरूको अवस्था क्रमश: दयनीय बन्दै गइरहेको छ।

महिला हिँसा समाजिक विकृति हो। यसलाई रोक्नु सामाजिक दायित्व हो। त्यसैले समाजमा सचेत मानिसहरू जागरुक हुनु अत्यन्त आवश्यक छ। एउटा भनाइ पनि छ 'परिवारमा महिला शिक्षित भएमा सिङ्गो परिवार नै शिक्षित हुन्छ' तसर्थ महिला हिंसा रोकथाम गर्न सर्वप्रथम महिलाहरू शिक्षित हुनुपर्छ। वि.सं. २०६८ सालको जनगणनाअनुसार नेपालमा ५७.४ प्रतिशत महिलाहरू साक्षर रहेको तथ्याङ्कले जनाउँछ। यसअघिको जनगणनामा भने ४२.८ प्रतिशतमात्र महिलाको साक्षरता रहेको छ। यसरी हेर्दा महिला साक्षरता दर बढेको देखिन्छ। तर पुरुषको दाँजोमा भने यो कम नै छ। महिलाले देशको आधा हिस्सा ओगटेको छ। त्यसकारणले नेपाली समाजमा महिला जागरण अत्यावश्यक भइसकेको छ। यसको लागि नारी र पुरुष दुवैलाई बराबरीको दर्जा दिनुपर्छ। महिला र पुरुषबीचको भेदभावलाई अन्त्य गर्नुपर्छ। साथै महिला र पुरुष दुवैले एकले अर्कोलाई सम्मान गर्ने बानी बसाल्नुपर्छ यस्तो परिस्थितिमा महिला सशक्तीकरण



अत्यावश्यक भइसकेको र किनभने यस किसिमको हिँसाले सिङ्गो समाजलाई नै आक्रान्त पारेको छ। महिला हिँसामा सहयोगी जोकोहीलाई पनि राज्यले दण्डित गर्नुपर्छ। सजाय तोक्नुपर्दछ। दोषीलाई कडाभन्दा कडा कारबाही गर्नुपर्छ। विभिन्न किसिमका महिला संघ, संगठन र अधिकारकर्मीले पनि आवाज उठाउनुपर्छ। महिलालाई हरेक क्षेत्रमा समान सहभागीता गराउनुपर्छ। अनि मात्र महिला हिंसा नियन्त्रण गर्न सकिन्छ। त्यसैले सुन्दर समाज र नयाँ नेपाल निर्माणका लागि महिला सशक्तीकरण र जागरुक हुनुपर्छ।

# अस्तित्वको खोजीमा योमरी माग्ने चलन

– लक्ष्मी गारु

"त्यः सिं त्यः ब्वकसिं त्यः थाबले यागु योमरी छगः ति यः
व्यूम्ह ल्यासे मव्यूम्ह सितिकुती
न्यगः व्यूसा कायु दुई छगः व्यूसा म्ह्याय् दुई
तालापाता कुलिचां जुसें त्यः
योमरी माकु उकि दुने चाकु
व्यूम्ह ल्यासे मव्यूम्ह बुरीबुरी"

धान्य पूर्णिमा अर्थात् योमरी पूर्णिमाको साँझ नेवार समुदायको घरआँगनमा मिठासपूर्ण लोकलयमा उल्लेखित गीत गाएर योमरी माग्ने चलन अस्तित्वको खोजीमा रहेको छ ।

पूर्णिमाको साँझ टोलटोलमा तिहारमा देउसीभैलो खेलेझैं केटाकेटी, युवायुवती जम्मा भई योमरी माग्ने चलन छ ।

योमरी एक प्रकारको परम्परागत रोटी हो । सबैलाई मनपर्ने भएर नै यसको नाम योमरी अर्थात् मनपर्ने रोटी भएको हो ।

चामलको पीठो मुछेर रोटीको माथिल्लो भाग गजुर जस्तै चुच्चो बनाई तल्लो भागको गर्भमा चाकु, मास, मुगी राखी अंजिर अथवा त्रिकोण आकार गरी दुई किसिमबाट बनाई पानीको बाफमा पकाउने गरिन्छ ।

योमरी माग्ने प्रचलन धान्य पूर्णिमाको एक महत्वपूर्ण सांस्कृतिक पाटो हो । आजभोलि यो महत्वपूर्ण सांस्कृतिक पक्ष लोपोन्मुख अवस्थामा अस्तित्व रक्षाका लागि संर्घषरत छ ।

संस्कृतिविद् ओमप्रसाद धौभडेलका अनुसार मल्लकालदेखि नै योमरी माग्ने प्रचलन चल्दै आइरहेको हो ।

उहाँले मल्लकालीन अन्तिम अवस्थामा नेपाल भाषा उच्च स्थानमा रहेकोले योमरी माग्ने गीत त्यही समयदेखि प्रचलनमा आएको हुनसक्ने उल्लेख गर्नुभयो । योमरी माग्ने गीतमा उल्लेखित शब्द केलाउँदा नेवार समुदायमा हुने एकतर्फी प्रेमको झल्कोसमेत दिने भन्दै उहाँले पछिल्लो समयमा प्रचारप्रसारको अभावमा योमरी माग्ने प्रचलन हराउँदै गएको बताउनुभयो ।

'देउसीभैलोमा जस्तै दक्षिणाको रुपमा पैसा नपाउने भएकाले युवावर्गको योमरी माग्ने संस्कृतिप्रति रुचि नभएको देखिन्छ । लोकलाजकै कारणले पनि युवा वर्ग यस संस्कृतिबाट टाढिँदै गएको हुनसक्छ' उहाँले भन्नुभयो ।

यस संस्कृतिलाई संरक्षण गर्न मातृभाषाको शिक्षा र संस्कृति नयाँ पुस्तालाई दिनुपर्ने खाँचो रहेको औंल्याउँदै संस्कृतिविद् धौभडेलले यस्ता सांस्कृतिक महत्व बोकेका परम्परागत चाडपर्वहरूको उत्थानका लागि व्यापक प्रचारप्रसार गनुपर्ने बताउनुभयो ।

योमरीलाई कुवेर र गणेशका प्रतीकको रुपमा लिइन्छ । पूर्णिमाका दिन योमरीलाई धानका भकारीलगायतमा चढाइने गरिन्छ । यसरी चढाएको योमरी चारदिनपछि मात्र प्रसादको रुपमा बाँडेर खाने प्रचलन छ ।

योमरीलाई धानका भकारीलगायत अन्नका भण्डारमा चढाउँदा धनसम्पत्ति र अन्न लाभ हुने जनविश्वास रही आएको छ ।

योमरी पूर्णिमाको बारेमा ऐतिहासिक कथनअनुसार पाँचाल देशमा (हालको पनौती) सुचन्द्र नाम गरेका दानी र धर्मात्मा महाजन बस्दथे । उनका दम्पती भगवान् विष्णुका परमभक्त थिए । उनीहरूको दयालु स्वभावको जाँच गर्न एकदिन धनपति कुवेर गरिब ब्राह्मणको भेषमा भिक्षा माग्न सुचन्द्रका घरमा पुगे । सुचन्द्रका श्रीमतीले ब्राह्मणरुपी कुवेरलाई श्रदापूर्वक आफूले तयार पारी राखेको योमरी खुवाए ।

उनको सत्कारदेखि प्रशन्न भई कुवेरले आफ्नो असली रुप देखाई योमरीको गुण र धानको भकारीमा श्री गणेश, कुवेर, लक्ष्मीको पूजा गरी योमरी चढाउने विधि बनाएर गए ।



सोही अनुरुप सुचन्द्र दम्पतीले योमरी धानको भकारीमा चढाएर चार दिनपछि प्रसादको रुपमा बाँडेर खाएकाले उनीहरूको धनसम्पत्ति वृद्धि भयो र योमरी खाएका कारण शरीरसमेत हृस्तपुस्त हुन थाल्यो ।

विस्तारै यो कुरा जताततै फैलिएपछि त्यस बेलादेखि नेवार समुदायमा योमरी पूर्णिमाको संस्कृति विकास भएको देखिन्छ ।

धनसम्पत्ति वृद्धि र धनधान्य वृद्धि हुने विश्वासले नेवार समुदायमा योमरी पूर्णिमाका दिन सबैले योमरीसहित विभिन्न देवीदेवताको पूजा गरी दान गर्ने गर्दछ । तर दान गर्ने इच्छा भए तापनि योमरी माग्ने प्रचलन लोप हुँदै जाँदा योमरी दान गर्न नसक्ने अवस्था आएको छ ।

## माओको जीवनीमाथि टेलिसृङ्खला निर्माण सुरु

बेइजिङ । विश्व सर्वहारा वर्गका महान् गुरु एवं चिनियाँ कम्युनिष्ट पार्टीका पूर्व अध्यक्ष माओ त्सेतुङ्गको जीवनीमाथि टेलिसृङ्खला निर्माण सुरु भएको छ ।

माओ त्सेतुङ्गको ११९ औं जन्मजयन्तीको अवसरमा मङ्गलबार बेइजिङ्गस्थित ग्रेटहल अफ द पिपुलमा 'माओ त्सेतुङ्गको एक जीवनी' नामक टेलिसृङ्खला निर्माणको घोषणा गरियो । उक्त टेलिसृङ्खला मुख्यतया माओ त्सेतुङ्गको जन्मदेखि अध्ययनको निम्ति संघर्ष, चिनियाँ अध्ययनको निम्ति संघर्ष, चिनियाँ कम्युनिष्ट पार्टीको विकास र जनगणतन्त्र चीनको स्थापनाका निम्ति उहाँको योगदानलाई प्रस्ट पार्ने बताइएको छ । एक सय सृङ्खलाको मुख्य निर्देशन काओ सिसिले गर्दैछन् भने अभिनेता होउ जीङलीन र अभिनेत्री लि कोङडान मुख्य भूमिका निर्वाह गर्दैछन् । त्यस्तै अभिनेताहरु कुओ लियानवेन, वाङ बुफुलगायतले पनि महत्वपूर्ण भूमिकामा अभिनय गर्ने बताइएको छ । होय जिङलिनले माओ त्सेतुङ्ग, लिउ कोङडानले चाङ काई हुई, कुओले चाउएनलाई तथा वाङले चुतेहको रुपमा अभिनय गर्दैछन् ।

उक्त टेलिसृङ्खला माओको ११९ औं जन्म जयन्ती डिसेम्बर २६, २०१३ देखि प्रसारण हुने आशा गरिएका छ ।



सोही अवसरमा चीनले विश्वको सबैभन्दा तीव्रगतिको र लामो रेलमार्ग सञ्चालनमा ल्याएको छ । यो रेलमार्गले चीनको राजधानीले बेइजिङलाई देशको दक्षिणी भागको व्यवसायिक केन्द्र ग्वान्झाओसँग जोड्छ । माओ त्सेतुङ्गको जन्मदिन २६ डिसेम्बरको अवसर पारेर बुधबार बिहान बुलेट ट्रेन बेइजिङबाट खुलेको हो । सुरुमा ट्रेनको रफ्तार औसत ३ सय किलोमिटर प्रतिघण्टा हुन्छ, जसले यात्रामा लाग्ने समय आधा कम हुने बताइएको छ । यो मार्गको केही भागमा भने पहिल्यै सेवा सुचारु भएको थियो ।



करिव २ हजार २ सय ९८ किलोमिटरको यो रेलमार्गमा ३५ स्टेशन छ, जसमा ठूला सहरुहरु वुखान र चांगशा पनि छन् । पहिले यो मार्ग हिँड्न २२ घण्टा लाग्थ्यो भने अब ११ घण्टा पनि नलाग्ने अधिकारीहरुले बताएका छन् । प्रविधिका रुपमा यो विश्वको सबैभन्दा अत्याधुनिक रेलमार्गमा एक हो- एक चिनियाँ अधिकारीले भनेका छन् ।

## संस्कृति र सम्पदा बचाउने युवालाई स्वरोजगार दे ।

– चक्रमान डंगोल

काठमाडौं । राजधानीको परम्परागत संस्कृति र समपदा संरक्षण युवाहरुले गरेका छन् । ती युवाहरु बेरोजगार छन् । सम्मानीय प्रधानमन्त्री ज्यू ती युवाहरुलाई स्वरोजगार प्याकेज दिऊँ । योमरी पूर्णिमा नवौं ज्यापु दिवसको अवसरमा ज्यापु महागुठका अध्यक्ष चक्रमान डंगोलको मन्तब्य हो सो भनाई ।

नेवार जात मध्येको एउटा जात ज्यापु दिवसमा ज्यापुका अध्यक्ष डंगोलले प्रधानमन्त्रीलाई सहयोगको माग कानले राम्ररी सुनास् भनी मातृभाषाबाट नबोली नेपाली भाषा मा बोल्नभएको थियो ।

कार्यक्रममा प्रमुख अतिथि प्रम बाबुराम भट्टराईले पानसमा दीप प्रज्वलन गरी नवौं राष्ट्रिय ज्यापु दिवस २०६९ मा सम्मानित हुने व्यक्तिहरुलाई सम्मान गर्नुभएको थियो । त्यस क्रममा वहाँले नेवार ज्यापुहरुलाई खुसी पार्न नेपाल भाषाबाट सम्बोधन गर्नुभयो ।

वहाँले काठमाडौंका ज्यापुहरुको योगदान स्मरणीय रहेको बताउँदै म र मेरो सरकार हरेक क्षेत्रमा सहयोग गर्न तयार रहको बताउनुभयो । वहाँले संविधान सभाबाट छुट्टै अधिकार दिने भनेर लाग्दा असफल भएको पनि सुनाउनु भयो ।

नवौं राष्ट्रिय ज्यापु दिवसमा कक्षाक्षेत्रमा ज्यापु रत्न पुरस्कार गोविन्द्र डंगोल (सानेपा), धर्म संसकृति शिक्षा अध्ययन अनुसन्धानमा ज्यापु प्रज्ञा सुर्वण शाँयक (ओमबहाल), दागी परम्परागत संस्कृति विधि ज्यापु






फोटो : बसन्त महर्जन

दीर्घ सेवा पदक मंगलमान महर्जन (त्यँगः), ज्यापु सरस्वती पदक जनसेवा उच्च मावि कीर्तिपुरका प्रधानाध्यापक नन्दुकमारी महर्जनलाई प्रदान गरियो । त्यसै गरी १० हजार राशी सहित डा. एलिशा महर्जन (यट्खा), कविना महर्जन,( इनवहा कमलाछ्री), खेलकुद प्रतिभा जिम्न्याष्टिक खेलाडी देव कुमार महर्जन ( भिमसेनस्थान), सांस्कृतिक प्रतिभा चर्या नृत्यमा चन्द्रमान महर्जन ( दमाई टोल), वाद्यवादनमा सूर्यनारायण महर्जन (ओमवहाल), पत्रकार प्रतिभा रेडियो पत्रकारमा शर्मिला सुवाल (ह्युमत) र बाल प्रतिभा नृत्य/गायनमा अग्रिच सिंह (मखटोल) लाई प्रदान गरेको थियो ।

ज्यापु विशेष सम्मानमा ज्यापु समाज यल, राजभाई जकःमी (पाँगा, कीर्तिपुर), पत्रकार चैतबहादुर सिंह (ब्रम्हटोल) बित्तीयअन्तर्गत किशोर महर्जन ( सिभिल बैंक) सरस्वती सिंह ( हनुमान ढोका दरवार संग्राहालय व्यवस्थापन समिति कार्यकारी निर्देशक), चन्द्रमणि भट्टराई कामपा सञ्चार विभाग, मचाराजा महर्जन (हनुमानढोका व्यवस्थापन समिति कार्यलय) सुनिता डंगोल (मिस नेवा २०६८), माकगल्ली फसिगाःलाई प्रदान गरेको थियो ।

# साहित्य

## कविता

– अर्जुन महर्जन
सहिदपथ, पाँगा

## स्वच्छ चरित्रवान देश सेवकलाई छानौं र चुनौं

**जाल**, जो कोही फसेपछि नफुट्कने खेल हो
खेल्दा आफ्नै फाइदा सोची खेल्ने खेल हो
खेलेपछि फाइदा नोक्शानी जे भएपनि खेलिरहनुपर्ने खेल हो
बिग्रेपछि पछुतो गरेपनि नसुल्झने **जाली** खेल हो

देशलाई सुधार्न खेल्ने राजनीति पनि खेल हो
नैतिकता बोध गराउन खेल्ने धार्मिक पनि खेल हो
अनुयायी र कार्यकर्तालाई भुमरीमा पार्ने पनि खेल हो
बुद्धिजीवी, नेता र धर्म गुरुहरुले खेल्ने यस्तै यस्तै खेल हो

खेलाडीले खेल त खेलेको खेल्यै गर्छ
रच्नेले जाल पनि रचेको रच्यै गर्छ
जनता सब किसिमको जालमा फसेको फस्यै हुन्छ
देश, आर्थिक, सामाजिक, नैतिकताको खाडलमा खसेको खस्यै हुन्छ

नयाँ पालुवा ल्याउन हुरीले पुरानोलाई झारी दिन्छ
राम्रो घर बनाउन काम नलाग्ने सामानलाई फाली दिन्छ
अब त साँच्चिकै सबै कुरा बुझ्ने र सोच्ने बेला भैसकेको छ
देशमा राम्रो व्यवस्था ल्याउन जनताले आन्दोलन गर्ने बेला भैसकेको छ

जनता अब त साँच्चिकै सचेत नागरिक बनौं
जाली फताहाहरुको जालझेल राम्ररी बुझौं र जानौं
अब आउने पालोमा खराब गर्नेलाई सफाचत पारौं
स्वच्छ, चरित्रवान देश सेवकलाई छानौं र चुनौं ।

## सामाजिक लोकतान्त्रिक पार्टी घोषणा

नेपाली काँग्रेस लगायत विभिन्न जातजाति मिलेर फेरि नयाँ पार्टी सामाजिक लोकतान्त्रिक पार्टी गठन गरेका छन् ।

पुस १५ गते राजधानीस्थित एसआर क्याटरिङ्ग धुम्बार ाहीमा पार्टीका संयोजक डा. चैतन्य सुब्बाले सो पार्टीको गठन भएको विधिवत घोषणा गरेका हुन् ।

पार्टीमा डा. सुब्बा सहित ७ जनाको अध्यक्ष मण्डल सहित ५६ संघीय सदस्य बनाएको छ । अन्य अध्यक्षमा कुमार र ाई, बमकुमारी बुढामगर, पासाङ्ग शेर्पा, दलमर्दन कामी, ज्योति दनुवार र न्यूमा ग्यात्जेन शेर्पा (ह्योल्मो) छन् ।

नेपाली काँग्रेस त्याग गरेका कुमार राई र एमाले त्याग गरेका पासाङ्ग शेर्पा हुन् । सालोपामा अधिकांश सदस्यहरु गैरसर कारी संस्थामा लागेकाहरु रहेको सो पार्टीले तीन महिनामा अधिवेशन गर्ने लक्ष्य लिएको छ ।



## मंगल बहुमुखी क्याम्पस जग शिलान्यास

मंगल बहुमुखी क्याम्पसको नयाँ भवन बन्ने भएको छ । भवन निर्माणको लागि जग शिलान्यास पुस १५ गते विश्वविद्यालय अनुदान आयोगका अध्यक्ष प्रा.डा. गणेशमान गुरुङ्गका प्रमुख आतिथ्यमा सम्पन्न भयो ।

त्यसक्रममा प्रमुख अतिथि गुरुङ्गले यस भवन निर्माण सम्पन्न भइसकेपछि कीर्तिपुरको शैक्षिक विकासमा टेवा मिल्ने बताउनुभयो । वहाँले भवन निर्माण उपभोक्ता समिति क्याम्पस प्रशासन र कीर्तिपुरवासीले सहयोग मिल्ने पनि बताउनुभयो ।

कार्यक्रम विद्यालय व्यवस्थापन समितिका अध्यक्ष प्रा.डा. शिवशरण महर्जनको सभापतित्वमा भएको कार्यक्रममा विशेष अतिथि त्रिविका उपकुलपति प्रा.डा. हिराबहादुर महर्जनले मंगल उच्च मावि र मंगल बहुमुखी क्याम्पस देशको शैक्षिक विकासमा ठूलो योगदान रहेको बताउनुभयो ।

कार्यक्रममा विद्यालयका प्राचार्य प्रदीप महर्जनले धन्यवाद मन्तव्य राख्नु भएको थियो ।

सो भवन निर्माणको लागि विश्वविद्यालय अनुदान आयोगबाट पहिलो चरणको लागि २५ लाख रुपैयाँ बजेट विनियोजन गरेको थियो ।

सो प्राप्त रकमबाट भवनको जग हाल्ने कार्य सम्पन्न हुने विद्यालयका प्राचार्य प्रदीप महर्जनले सहिदलाई बताउनु भयो ।

# विलिभर्समा नयाँ नेतृत्व चयन

कीर्तिपुर । विलिभर्स बचत तथा ऋण सहकारी संस्था लि. को चौंथो वार्षिक साधारण सभा पुस १३ गते शुक्रबार कीर्तिपुरस्थित ज्योति आवासीय विद्यालयको प्राङ्गणमा सम्पन्न भयो ।

सो वार्षिक साधारण सभाबाट नयाँ नेतृत्वमा पुनः सुजेन्द्र मालीको अध्यक्षतामा निर्विरोध चयन भएको छ । त्यसैगरी उपाध्यक्षमा अष्टमान महर्जन, सचिव निर्मला महर्जन, कोषाध्यक्षमा कृष्ण गोपाल महर्जन, संचालक सदस्यहरुमा राजेश महर्जन, उमेश महर्जन, र काजीराम मालाकार चयन भएका छन् ।

लेखा समिति बाबुराम महर्जनको संयोजकत्वमा सदस्य नारायण महर्जन र गुणलक्ष्मी माली चयन गरेको छ ।

संस्थाका सल्लाहकार गणेशमान महर्जनले प्रार्थना गरी उद्घाटन गरिएको सो सभामा उपाध्यक्ष अष्टमान महर्जन रलेखा समितिका संयोजक काजीराम मालाकारले संस्थाबारे बोल्नुभएको थियो ।

कार्यक्रममा आ.व. २०६८/०६९ को आर्थिक प्रतिवेदन र वार्षिक कार्य प्रगति तथा भावी कार्यक्रम सहितको प्रतिवेदन संस्थाका अध्यक्ष एवं कार्यक्रमका सभापति सुजिन्द्र मालीले प्रस्तुत गर्नुभएको थियो ।

हालसम्म संस्थाको शेयर पूँजी ५० लाख ५५ हजार ९ सय रहेको र आ.व. २०६८/०६९ मा विभिन्न बचतबाट रु. ७७ लाख ७३ हजार ६५९ निक्षेप बृद्धि भई हालसम्म १ करोड ८१ लाख २९ हजार ६६१ निक्षेप संकलन भएको जनाएको छ ।



## मजदुर आवाज.........

# एक साइकल व्यवसायी चौधरी


बुद्धिराम चौधरी

बुद्धिराम चौधरी एक साइकल व्यवसायी २०५० सालदेखि कीर्तिपुर नयाँबजारमा कीर्तिपुर क्षेत्रका साइकल पारखीहरुको सेवामा रहेको छ ।

बुवा जल्लु चौधरी र आमा चुलिया चौधरीका ५ छोरा मध्ये जेठा छोरा बुद्धिरामको जन्म चितवन कठार गाविस १ गठौलीमा भएको थियो ।

श्रीमती माया चौधरीसँग ५७ सालमा विवाह गरी दुई छोरी दिलिना र हसिना चौधरी, सन्तानका धनी बुद्धिराम कीर्तिपुरमा साइकल व्यवसायी गरी सेवा दिइरहन पाउँदा खुसी हुनुहुन्छ । सुरुका वर्षमा ३० हजारबाट लगानी गरेका चौधरीसँग अहिले डेढ लाखदेखि २ लाखसम्म साइकलका पार्टस् र नयाँ साइकलमा लगानी गरेको छ ।

विहान ७ बजेदेखि बेलुकी ७-८ बजेसम्म पञ्चर टाल्ने, टिपट मिलाउने, रिङ्ग फेर्ने, टायर ट्युव फेर्ने, ६/७ वटा साइकल मर्मत गरिने गरेको छ भने बालकदेखि युवासम्मको लागि मासिक ८-१० वटा सम्म नयाँ साइकल बिक्री पनि गर्दै आइरहेका छन् चौधरीले ।

दुई ठाउँमा कोठाको बहाल १३ हजार तिर्नुपर्ने, २ जना छोरीलाई मेगस स्कुल नयाँबजारमा पढाई गरी विहान, दिउँसो र बेलुका छाक तारेरपनि दैनिक ५००।- रुपैयाँ चोखै बचेको उनको भनाई छ ।

चितवनमा १७ परिवार मध्ये ४ भाइ विदेशमा कार्यरत रहेकोमा आफू किन साइकल मर्मत र बिक्री पेशामा लाग्दाको अविस्मरणीय घटना सुनाउनुहुन्छ चौधरी ।

कामको खोजीमा भारतमा पुग्दा साइकल मर्मत गर्ने इच्छा छँदा काम नपाएपछि गार्मेन्टमा काम गर्नु परेको र ६-७ महिनासम्म काम गर्दा पनि गार्मेन्टका मालिकको अपहेलना, गाली खानुपर्ने, धेरै दुःख गरी काम गर्दा पनि तलब नदिने जस्ता व्यवहारले तलब नलिई घर फर्केको तीतो अनुभव सुनाउनु हुन्छ ।

भारतमा त यस्तो स्थिति भोग्नु पर्‍यो भने अरु विदेशमा कस्तो होला, विदेशमा पनि धेरै दुःख नै गर्नुपर्ने छ भने विदेशमा पसिना खर्च गर्नु भन्दा आफ्नै देशको माटोमा मिहेनत गरी खान, लाउन, परिवार चलाउन सकिन्छ भने किन विदेश जाने भन्नुहुन्छ चौधरी ।

कीर्तिपुरमा पहिले आउँदा र अहिलेको अवस्थाबारे चौधरी भन्नुहुन्छ, 'सुरुमा कीर्तिपुर पुग्दा धेरै गाह्रो भयो । नयाँ ठाउँ चिनजान नभएको र काम गरेअनुसारको पैसा उठाउन नसक्ने । १०० रुपैयाँ मर्मत खर्चमा ५० रुपैयाँमात्र दिन खोज्ने तर अहिले मर्मतमा लागेको पैसा उठ्ने गरेको छ ।' 'कीर्तिपुर क्षेत्रका बासिन्दाहरुको व्यवहार अहिले धेरै राम्रो लाग्दछ ।' उनले थपे ।

अहिले के समस्या छ भनेर प्रश्न गर्दा, उनले पेशा व्यवसायी गर्न चाहेर पनि ठाउँको अभावले गर्दा निर्धक्कसँग काम गर्न नसकेको गुनासो पोखे । मर्मतका साइकलहरु पेटीमा र सडकमा राखेर काम गर्न बाध्य छन् उनी ।

पार्किङ्गको राम्रो व्यवस्था गर्नुपर्ने देखिन्छ । सरकारबाट कस्तो अपेक्षा राखेको छ भन्दा आयात गरेका साइकलका सामानहरुमा भन्सार छुट गरे सस्तोमा कारोबार गर्न सकिने बताउनुभयो । होलसेलर र आयात गर्ने संस्थाबाट भन्सार बृद्धि भएको भन्दै साइकलका सामानको मूल्यवृद्धि पटकपटक हुने गरेको गुनासो व्यक्त गर्नुभयो ।

२०६३ सालमा नेपाल साइकल मजदुर संघ गठन गरेकोमा सदस्य भएपनि प्रभावकारी नभएको र जसले गर्दा साइकल मर्मत व्यवसायीहरुमा एकरुपता नभएको पनि बताउनुहुन्छ तर चितवनमा एकरुपता रहेको कुरा अवगत गर्नुभयो ।

साइकल व्यवसायी गर्ने ३६ वर्षका चौधरी देशमा चाँडै संविधान बनोस् भन्ने चाहना राख्नुहुन्छ । देशमा शान्ति होस् र जनता कतै जाँदा सकुशल फिर्ता गर्ने वातावरण हुनुपर्दछ भन्नुहुन्छ । 'विकास ढिलो या चाँडो हुन्छ राजनीति गर्नेहरु राम्रो हुनुपर्‍यो ।' उहाँको तर्क थियो ।

सरकार जस्तोसुकैको बनेपनि देश राम्ररी चल्नु पर्दछ कुर्सीको लागि मात्र तानातान नगरौं भन्नुहुन्छ ।

चौधरी साइकल स्टोरमा बच्चाहरुको ७-१२००, र ठूलाको २८०० देखि ५५०० रुपैयाँसम्मका र माउन्टेन बाइक ६५०० देखि १२००० सम्मको साइकल उपलब्ध रहेको छ ।





## अध्यक्ष रोहितसँग....

सम्बोधनबारे चर्चा गर्दै भू-उपग्रह प्रक्षेपणमा प्रजग कोरियाले तेस्रोपटक सफलता प्राप्त गरेको र पार्टी, सेना र जनता मिलेर बिजुली, कोइला, हलुका र भारी औद्योगिक उत्पादनमा जोड दिइरहेको बताउनुभयो ।

सैनिक शक्ति बलियो भए देश र जनता सुरक्षित हुने बताउँदै राजदूत सुले उत्तर, दक्षिण र संसारका विभिन्न भागमा रहेका कोरियालीहरू मिलेर देश पुनःएकीकरण गर्ने लक्ष्य प्रकाशित सम्बोधनमा उल्लेख भएको चर्चा गर्नुभयो ।

संरा अमेरिकालगायत साम्राज्यवादीहरूबाट प्रजग कोरियालाई सुरक्षित गरेको ६१ औं वर्षगाँठ यस वर्ष संसारका मित्रहरूलाई निम्ता गरेर प्योङयाङमा भव्यतासाथ सम्पन्न गर्ने समेत भेटमा महामहिम राजदूत सुले उल्लेख गर्नुभयो ।

अध्यक्ष बिजुक्छेंले शुभकामना पठाउनु भएकोमा कोरियाली मजदुर पार्टीका नेता, कामरेड किम जङ उनसम्म आफ्नो धन्यवाद पुऱ्याइदिन महामहिम राजदूतलाई आग्रह गर्दै प्रजग कोरियाको भू-उपग्रह प्रक्षेपणमा प्राप्त सफलता संसारको स-साना देशकै गौरव र खुसीको विषय भएको उल्लेख गर्नुभयो ।

प्रजग कोरियाको पार्टी र सरकारले नयाँ वर्षको शुभकामनामा जनताको लागि कोइला र बिजुली व्यवस्था गर्ने औद्योगिक उत्पादन बढाउने विषय उल्लेख गरेको बारे नेपाली जनतालाई बताउनु सकारात्मक हुने उल्लेख गर्दै अध्यक्ष बिजुक्छेंले कोरियाको शान्तिपूर्ण पुनःएकीकरणको कामना गर्नुभयो ।

अध्यक्ष बिजुक्छेंले कामरेड किम जङ उनको नेतृत्वमा कोरियाली शैलीको समाजवादले नयाँ नयाँ उपलब्धी हासिल गर्दै जाने कामना गर्दै नेपाल मजदुर किसान पार्टी र कोरियाली मजदुर पार्टी र दुई देशका जनताको बीचको सम्बन्ध थप गाढा हुँदै जाने अपेक्षा गर्नुभयो ।

## अब बिरामीले.....

स्वास्थ्य तथा जनसंख्या मन्त्रालयले रक्तदाताहरुबाट निःशुल्क रुपमा प्राप्त भएका रगत बिरामीले पनि निःशुल्क पाउन भन्नाका लागि पहिलोपटक नीतिगत व्यवस्था गर्न लागेको हो ।

मन्त्रालयका चिकित्सा महाशाखका प्रमुख एवम् कामु सचिव प्रा.डा. तीर्थ प्रसाद बुर्लाकोटीले ब्लड डोनर्स एशोसियसन नेपाल (ब्लोदान) को १६ औं साधारण सभाको उद्घाटन गर्दै छिट्टै नीतिगत व्यवस्था गरिने जानकारी दिनुभयो ।

मन्त्रालयले वि. सं. २०४८ सालबाट ब्लड बैंक सञ्चालनको जिम्मा नेपाल रेडक्रस सोसाइटीलाई दिएको थियो। भनेका समयमा बिरामीले खोजेको रगत नपाउने, निःशुल्क रुपमा प्राप्त भएका रगत पनि शुल्क तिरेरमात्र बिरामीले लिनुपर्ने जस्ता कारणले रेडक्रसलाई दिएको सो जिम्मेवारी पुनः सरकारले लिने तयारी पनि गरिराखेको छ ।

'ब्लड बैंक सरकार आफैले सञ्चालन गर्नुपर्छ भन्ने कुरामा मन्त्रालय सहमतिमा पुगिसकेको छ ।' कामु सचिव प्रा डा. बुर्लाकोटीले भन्नुभयो ।

सोसाइटीका अनुसार ब्लड बैंकमा रगत संकलन तथा वितरणका लागि हाल बर्षेनी सात आठ करोड रुपैयाँ खर्च भइराखेको छ । रक्त सञ्चार सेवा केन्द्र (ब्लड बैंक) मा गत वर्ष एक लाख ७७ हजार १९५ यनिट रगत संकलन भएको थियो ।

हाल देशका ६२ जिल्लाका ८५ स्थानमा रक्तसञ्चार सेवा केन्द्र संचालनमा रहेका छन् ।

नेपाल रेडक्रस सोसाइटीका कार्यकारी निर्देशक उमेश ढकालले रक्तसञ्चार सेवा केन्द्र सबै जिल्लामा पुऱ्याउने लक्ष्य रहेको जानकारी दिनुभयो ।

सो अवसरमा सचिव प्रा.डा. बुर्लाकोटीले रक्तसञ्चार सेवा केन्द्रका कनिष्ट जनसम्पर्क अधिकृत डिल्लीराज अधिकारी, सहायक प्राध्यापक रजनी श्रेष्ठ र सन्त निरंकारी मण्डललाई सम्मान गर्नुभएको थियो ।

ब्लोदानका अध्यक्ष महेन्द्रविलास जोशी र महासचिव सानुबाबु प्रजापतिले आगामी चैत १६ र १७ गते पहिलो ब्लड डोनर्स सम्मेलन आयेजना गर्न लागिएको जानकारी दिनुभयो ।

# नयाँ वर्ष २०१३ को शुभकामना सहित प्रेरणा मिलोस्

नयाँ वर्ष सन् २०१३ को सुखद आगमनसँगै जाँडोको क्रम पनि बढ्दै गएको छ । मुटुलाई ठोक्ने, चिसोले कम्पन गराएको छ । बुढादेखि बच्चासम्म सबै चिसोको पीडाले पीडित छन् भने अर्कोतर्फ मौसमको आफ्नो सुन्दर विशिष्टताले सर्वसाधारण रमाई पनि राखेका छन् । यस्तो परिवेशमा क्षणिक पीडाले कसैलाई दोष दिनुपनि सर्वथा उचित हुँदैन । यो त जीवन चक्रको शास्वत नियम हो । भविष्यमा के हुने हो, यसको ठीक-ठाक पूर्वानुमान गर्न सकिन्न तर यो त बिल्कुल सत्य हो कि जसले अरुको दोष देख्दछ, उसले आफ्नो मिथ्या अहंकारलाई बढाउँदै लगेको हुन्छ र उसुको स्वभावमा क्रोध र घृणाको मात्रा बढ्दै जान्छ । उसले अरुको सम्बन्धमा अहंकारपूर्ण धारणालाई जन्म दिन्छ र आफूलाई सर्वश्रेष्ठ बुझ्ने गर्दछ । उसले आफ्ना कुकृत्याबाट अन्धो हुन्छ तथा ऊ एक किसिमको छट्टु र कुरा काट्ने बानीको शिकार बन्दछ ।

कुनैपनि मानिस शुद्ध र पवित्र हुन सक्दैन कि उसले अरुको व्यक्तिगत विकृतिलाई दोषपूर्ण दृष्टिले हेरोस् र त्यसको लागि उसलाई स्वयं दण्डित गरोस् । कुनै महापुरुषले ठीकै भनेका छन्- अर्काको दोष नहेर अन्यथा जीवनकालसम्म मात्रै होइन मरणोपरान्त पनि तिम्रा दोषका लेखा जोखा गर्ने असंख्य हुनेछन् । साथै सुन्दर, शान्त र समृद्ध राष्ट्रको निर्माण तब मात्र सम्भव छ जब हामी कुनै वर्गा, गुत वा दलकै सर्वोपरी हितको लागि मात्र काम नगरेर सम्पूर्णतालाई सोचेर मात्र काम गर्दै गयौं भने धेरै आशा गर्न सक्छौं । जसरी सुक्ष्मभन्दा सुक्ष्म अणुहरुको एकताले विश्वको उत्पत्ति भएको छ त्यसैगरी असंख्य व्यक्ति र वर्गको मेलमिलापले समाज बन्दछ ।

एक-एक गरेर सबै वर्ग र जातिलाई पृथक गरिदियौं भने नत यहाँ समाज रहन सक्छ न त संसार नै । अतः आउनोस् यस नयाँ वर्ष सन् २०१३ को सुखद विहानीमा सुखद भविष्यको लागि संकल्प गरौं कि- "हामी सबै भिन्न-भिन्न आ-आफ्नो अस्तित्व र संकुचित दलिय घेरालाई छाडेर, व्यक्तित्वको स्वार्थ र अहंकारलाई त्यागेर निजी सद्गुणहरुद्वारा सामाजिक सद्भाव र राष्ट्रिय एकताको मूलमन्त्रलाई अँगिकार गर्दै सुन्दर समाज, शान्त र समृद्ध राष्ट्रङ्को निर्माणको सपना साकार गरौं । मानव सेवा गरौं ।" मानिस सेवाको लागि नै जन्मेको हो। म तपाईंको कामलाई मद्दत गर्न सकुँ, तपाईं उनको कामलाई र उनीहरु मेरो ।



– प्रो. राजेन्द्र अमात्य
फिट्नेस प्वाइन्ट ट्रेडिङ

यसैक्रममा समाजको विकास भएर समृद्ध र सहिष्णु समाज बनेर राष्ट्र बलियो भएर जानेछ । तसर्थ सन् २०१३ को नयाँ वर्षले समस्त दाजुभाई, दिदीबहिनी तथा बुबाआमाहरुमा नयाँ जोश, उत्साह र राम्रो कार्य गर्न प्रेरणा मिलोस् तथा सुख, शान्ति सुस्वास्थ्य एवं समृद्धिले स्वागत गरोस्, यही छ मेरो नव वर्षको मांगलिक शुभकामना ।

## संविधान सभाको.....

काँग्रेस नेतृत्वको सरकार स्वीकार्ने तर ती शर्तहरु मान्नु प्यास लागेर विष पिउनु जस्तै हुने बताउनुभयो ।

अन्तरिम संविधानको सहमतिको सरकार नेपाली जनताको लागि घाँडो भएको चर्चा गर्दै अध्यक्ष रोहितले भन्नुभयो - 'संविधानसभा विघटन अघि केही दिनको लागि काँग्रेस र एमाले सरकारमा गएको जसरी आत्मघाती सावित भयो, अहिले एकै दिनको लागि मात्र पनि भट्टराई नेतृत्वको सरकारमा जानु अत्मघाती हुनेछ ।'

उहाँले भन्नुभयो - 'प्रमुख प्रतिपक्षि दलहरु वर्तमान सरकारको औचित्य छैन भनी र सरकारको दलहरु आफ्नो औचित्य पुष्टि गर्न जनताबीच जानुपर्छ ।'

एमाओवादी र मधेसवादी दलहरुको वर्तमान गठबन्धन सरकार भारतीय विस्तारवादकै भरमा टिकिरहेको कुरा 'जगजाहेर' भएको भन्दै उहाँले आफ्नो सशस्त्र युद्धमा सहयोग गरेबापत एमाओवादी सरकारले भारतलाई सस्तोमा विद्युत बेचिरहेको र नेपालीले जनता लोडसेडिङ्ग भोगिरहेका छन् भन्नुभयो ।

## स्वतन्त्र....

निकास खोल्नुपर्ने बताउँदै स्वतन्त्र या तटस्थ व्यक्तिको नेतृत्वबारे दलमा छलफल गरी जवाफ दिने भनेका छन् । तर एमाओवादीको कुरा आजको आजै फेर्ने भएकाले विश्वास गर्न नसकिने बताउनु भयो ।

नेता नेपालले छिटो निकासको लागि सबै विकल्प खुल्ला छ भन्नुभयो । स्मरणीय छ, नेमकिपाले अहिलेको राजनैतिक अन्योलको उत्तम निकास स्वतन्त्र र तटस्थ व्यक्तिको नेतृत्वमा सरकार बनाई संसदीय निर्वाचन गर्नुपर्ने आवाज उठाइँदै आइरहेको छ ।

## एमाले.....

देशको राजनैतिक परिस्थिति कता जाने प्रस्ट भइनसकेकोले बैठक स्थगन गरिएको जानकारी दिए (प्रदीप ज्ञवाली नागरिक दैनिक पुस १६ सोमबार)

अन्योलपूर्ण राजनीति कता जाने हो भन्ने स्पष्ट होस् भनेर कुरेका हौं । राजनीतिले एउटा कोर्स लेओस् त्यसअनुसार निर्णय गरौंला भनेर स्थगन गरिएको हो । हाल राजनीतिक अवस्थामा कुनै निर्णय लिंदा परिस्थितिका परिवर्तन भएर असान्दर्भिक हुनसक्छ ।

मंसिर २५ मा सुरु भएर तीन दिने चलेको बैठक पुस ८ मा पहिलो स्थगन गरिएको थियो ।

# गृहमन्त्री गच्छदारलाई देशद्रोहीको मुद्दा लगाउनुपर्छः बिजुक्छें

नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छें (रोहित)ले भारतीय नागरिकलाई नेपाली नागरिकता दिन दबाब दिने गृहमन्त्री गच्छदारलाई देशद्रोहीको मुद्दा लगाउनुपर्ने बताउनुभयो। अध्यक्ष बिजुक्छेंले वर्तमान राष्ट्रघाती तथा देशद्रौही सरकारलाई एक मिनेट पनि सरकारमा बस्ने अधिकार नभएको बताउनुभयो ।

शनिबार नेपाल क्रान्तिकारी सांस्कृतिक संघले आयोजना गरेको एक अन्तरक्रिया कार्यक्रममा सञ्चारकर्मीहरुसँग कुराकानी गर्दै उहाँले सरकारलाई जनतामाझ आफ्नो औचित्य सावित गर्न चुनौती दिनुभयो। राष्ट्रघाती र देशद्रोही काम गर्ने सरकारलाई बर्खास्त गर्नुपर्नेमा उहाँको जोड थियो ।

वर्तमान राजनीतिको निकास आन्दोलन नै भएकोमा उहाँको जोड थियो । 'आन्दोलनको विकल्प छैन' उहाँले भन्नुभयो । पद, पैसा, सत्ता र कुर्सीको निम्ति राजनीति गर्नेलाई राजनीतिबाट सन्यास लिन बिजुक्छेंको सुझाव थियो ।

अध्यक्ष बिजुक्छेंले भारतले असमान सन्धि सम्झौता गर्न सहमतीय सरकारको रटान गरेको बताउँदै सहमतीय नभई बहुमतीय सरकार आवश्यक भएको उल्लेख गर्नुभयो । उहाँले भारतले पुराना, काम नलाग्ने, कन्टेनरमा फाल्ने हतियार नेपाललाई भिराउन खोजेको भन्दै यसको विरोध गर्नुपर्ने बताउनुभयो ।